## मञ्चमा

| | |
|---|---|
| कथा वाचक/जुम्रा : | अनुपम शर्मा |
| हेत्छाकुप्पा : | उमेश तामाङ |
| मामा १/कुखुरा : | सजन थापा मगर |
| मामा २ : | दिवान रसाइली |
| तायामा : | जुनु विष्ट |
| खियामा : | सिर्जना सुब्बा |
| रिदुमा : | सृजना वान्तवा राई |
| पुतली : | विनीता गुरुङ |
| चरा : | मोहम्मद नाजिर हुसैन |
| चाक्लुङ्ढीमा : | रुरु पोखरेल |

## नेपथ्यमा

**आभार :**
किराँत राई यायोख्खा, पदम वालाहाङ राई, अन्वेष थुलुङ आशामाया राई, रोटन एप्पल इन्टरटेन्टमेन्ट, द कैलाश जोर्नी ट्रेकिङ्ग एण्ड टुर्स प्रा.लि., आदित्य कटुवाल, गुरुकुल र मण्डलाका सहयोगी हातहरु।

| | |
|---|---|
| मञ्च परिकल्पना तथा सामाग्री : | सजन थापा मगर |
| सहयोगी : | सृजना गहतराज, सबिना लम्साल |
| सङ्गीत : | अनुपम शर्मा, सजन थापा, दिवान रसाइली |
| प्रकाश संयोजन : | बुद्धि तामाङ |
| परिचालन : | बिजय बराल |
| निर्देशन : | पशुपती राई |



## नाटकका बारेमा

किरातहरूको पौराणिक लोककथाहरू मध्येको एक प्रसिद्ध लोककथा हो 'हेत्छाकुप्पा' को कथा । यो नाटक किराती 'वापा सिली'मा आधारित छ । किराती भाषामा 'हेत्छाकुप्पा' को अर्थ टुहुरो भन्ने बुझिन्छ । हेत्छाकुप्पाका दुई दिदीहरू तायामा र खियामा थिए । अभावमै भएपनि ती दिदीहरूले भाईलाई खुब माया र हेरविचार गरी हुर्काएका थिए । त्यसै ठाउँमा चाकलुङ्धीमा नाम गरेको एउटी बच्चा खाने राक्षस्नी पनि थिई, जो आवश्यकता अनुसार रुप परिवर्तन गरीरहन सक्थी । चाकलुङ्धीमाको आँखा हेत्छाकुप्पामाथि परेको हुन्छ । तर दिदीहरूले संरक्षकत्वले गर्दा गर्दा राक्षस्नीले भाईलाई खान सकेकी हुन्न । हेत्छाकुप्पा चकचके स्वभावको हुन्छ । एकदिन सानी दिदी खियामासँग चलीरहेको बेला ठूली दिदी तायामाले भाईलाई झापड हान्छे । हेत्छाकुप्पा बेहोस हुन्छ । धेरै उठाउने प्रयास गर्दा पनि भाई उठ्दैन । दिदीहरूले भाई मर्‍यो भन्ने सम्झी विलाप गर्छन् । तायामा आफ्नो कारणले भाई मर्‍यो भन्दै अब त्यो ठाउँमा बस्न नसक्ने बताउँछे र उनीहरू त्यो ठाउँ छाडेर हिँड्छन् । हेत्छाकुप्पा बेहोसीबाट ब्युँझिन्छ तर दिदीहरूलाई देख्दैन । दिदीहरू नभएपछि राक्षस्नीले उसलाई धेरै दुःख दिन्छे । हेत्छाकुप्पाले चतुर्‍याई देखाइ राक्षस्नीबाट उम्किन्छ र मामाहरूको सहयोगमा त्यो राक्षस्नीलाई मार्न सफल हुन्छ । प्रकृतिप्रेमी हेत्छाकुप्पाले चराचुरुङ्गी, जुम्रा, पुतलीजस्ता विभिन्न प्राणीहरूको सहयोग लिई दिदीहरूलाई खोज्ने प्रयास गर्छ र अन्त्यमा कुखुराको भालेको सहयोगमा हराएका दिदी (नाना)हरूलाई भेट्छ । कुखराले संकेत गरी दिदीहरूलाई भाईसम्म पुर्‍याउँछ । त्यो संकेतबाट नै वापा सिली बनेको हो, भनिन्छ । किरात भाषामा 'वापा'को अर्थ कुखुराको भाले भन्ने बुझिन्छ ।

## कथा वाचकको भनाई

हेत्छाकुप्पा नयाँ सिर्जना पटक्कै होइन । होइन नयाँ कथा पनि । र, यो कथा लिखित कथा पनि होइन । यो भनिने कथा अर्थात् 'दन्त्यकथा' हो खासमा ।

पूर्वी नेपालमा सघन बसोवास गर्ने किरात राई समुदायको लोककथा हो हेत्छाकुप्पा । यो मिथक हो तर मिथक भनेर यो जादुगरी वा स्वैर कल्पनाले ग्रस्त पनि छैन ।

किरात राई समुदाय 'मुन्दुमि' दर्शन, संस्कृति र सभ्यतामा विश्वास गर्छ । मुन्दुमि दर्शनका अनुसार मानिसको जीवन मसिनामसिना अनन्त दुःख र चुनौतिहरुद्वारा जेलिएको हुन्छ । तीनलाई पार गर्दैनिरन्तर बाँच्नु मानिसको सत्य हो । यही बिम्बमा हेत्छाकुप्पाको कथालाई खास महत्व दिने गरिन्छ । किराँत राई समुदायमा हेत्छाकुप्पाको कथा नभनी कुनै पनि जीवनकर्म अर्थात् जन्मदेखि मृत्युसम्मका सम्पूर्ण कर्महरू सम्पन्न हुँदैनन् । 'हिजो हेत्छाकुप्पाले गरिल्याएकोले...' भन्दै हेत्छाकुप्पाको कथा भन्नै पर्ने हुन्छ । त्यसैले यो कथा किराती दर्शनमा आधारित कथा हो ।

## मण्डलाका तर्फबाट

नेपाली रङ्गमञ्चमा महिला निर्देशकहरु कम छन् । फरक निर्देशकको नाटकका स्वाद र विचार पनि फरक हुन्छन् । मण्डला थिएटरसँग एकजना महिला निर्देशक गाँसिइन् । यो अवसर निर्देशक र मण्डला दुवैका लागि खुशीको कुरा हो ।

धन्यवाद पशुपती !

-राजन खतिवडा
निर्देशक
मण्डला थिएटर नेपाल

## निर्देशकको भनाई

यो नाटक मञ्चको तिखलि गर्दा तयार भएको हो । गुरुकुलको लामो विश्रामपछि, यो एउटा कलाकारको नाटकप्रतिको लोभ हो ।

तयारीका क्रममा 'नाटक कस्तो होला ? के भन्ने हुन ?' भन्ने विचारले थिच्थ्यो । त्यो बेला सुनील सरले भनेको एउटा वाक्य सम्झन्छु – 'जे काम शुरु गरियो, त्यो काममा यत्रैसिच्चि भनेर हामफाल्नु पर्छ, अनि थाहा हुन्छ, के हुन्छ ।' गुरु सुनील पोखरेललाई सम्झन चाहन्छु । अनुप बराल सरले प्रोत्साहन दिनुभएकोमा धन्यवाद । सरोज राई, प्रतिमा राई, सिर्जना राई, सजन थापा मगर, दिवान रसाइली, श्वेता राई, सुमना राई, दिकु शेर्पासँगै विक्रमसिंह थारु, पदम वालाहाङ्ग राईलाई धन्यवाद ।

मलाई विश्वास गरेर कथा सुनाउनुहुने राजन मुकारुङ् र नाटक तयारीका क्रममा सल्लाह सुझाव दिनुहुने द्याहाङ राई, राजन खतिवडा, मण्डलाका सबै साथीहरुलाई सहयोगका लागि हार्दिक धन्यवाद भन्छु । मलाई माया गरी सहयोग गर्ने गुरुकुलका साथी र सहयोगी हातहरु सबैलाई धन्यवाद । नाटक सकिएपछि म तपाईंको अमूल्य सल्लाह-सुझाव पर्खिन्छु ।

-पशुपती राई